**श्रीमाननिय शिक्षामन्त्रि गिरिराजमणि पोखरेलज्यू**
शिक्षा मन्त्रालय, नेपाल सरकार
सिंहदरवार, काठमाडौं

विषय :**शिक्षामा मातृभाषा बारे ।**

श्रीमान,

नेपालको नयाँ संविधानले नेपालमा बोलिने सबै जनसमुदायका मातृभाषालाई राष्ट्रभाषाको मान्यता दिई सबैले आ-आफ्नो मातृभाषालाई स्वतन्त्र रुपमा उपयोग र विकास गर्न पाउने तथा आ-आफ्नो मातृभाषामा शिक्षा लिन पाउने, सबै जन समुदायको हक रहेको व्याख्या गरेको छ ।

यस परिपेक्षमा जातिय पहिचानको मुद्दा बोकेको दोस्रो जनअन्दोलन २०६२।६३, सशस्त्र जनयुद्ध, आदिवासि जनजाति तथा मधेसी आन्दोलन सम्पन्न भई दोस्रो संविधान सभाबाट नयाँ नेपालको संविधान समेत जारी गरी संघिय लोकतान्त्रिक गणतन्त्र नेपाल संस्थागत गरी नयाँ सरकार समेत गठन गरीसकेको छ ।

अव नयाँ शैक्षिक सत्र समेत नजिक आइरहेको सन्दर्भमा शिक्षा मंत्रालयबाट नेपालको शिक्षामा मातृभाषाको स्थितिबारे गहन दृष्टि पुर्याइ संविधान प्रदत्त हक अधिकार व्यवस्थित गर्नु हुन हामी अपिल गर्न चाहन्छौं ।

नेपालको शिक्षामा मातृभाषाको स्थिति, सरकारले शिक्षा क्षेत्रमा लिइएको भाषा नीति र नेपालको शिक्षामा मातृभाषाको समस्या समाधान गर्ने बारे यहाँ केहि कुरा स्मरण र स्पस्ट पार्न चाहन्छौं।

**१– नेपाल सरकारले लिएको शिक्षामा मातृभाषाको स्थिति :–**

१.१ –**२००७ साल**मा प्रजातन्त्रको उदय पछि नेपालमा औपचारिक शिक्षाको विकास भयो । यस्को साथै शिक्षामा मातृभाषाले पनि स्थान ग्रहण गर्यो ।

**प्रतिफल :–"स्कुल लिभिङ्ग सर्टिफिकेत एक्जामिनेसन" परिक्षामा मातृभाषा विषयमा परीक्षा दिने विद्यार्थिहरु तुलनात्मक रुपमा आज भन्दा १००० गुणा रह्यो । २००७ सालदेखि २०२९सम्म शिक्षामा मातृभाषाको विकाशमा स्वर्ण युगको संज्ञा लियो ।**

१.२–**२०१७ साल**मा पंचायती व्यवस्थाको उदय पछि नयाँ शिक्षा नीति २०२८ अन्तरगत २०३० साल देखि मातृभाषालाई विस्थापित गर्ने नीति लियो ।

उदारहण:–

(क) कक्षा ६,७ र ८ मा मातृभाषा विषयको पठनपाठन रोकिदियो ।
(ख) कक्षा ९र १० मा मातृभाषा विषयलाई गणित विषय संग विकल्पमा राखियो ।
(ग) कक्षा ११र१२ मा मातृभाषा विषयको पठनपाठन रोकिदियो ।

**प्रतिफल :–"स्कुल लिभिङ्ग सर्टिफिकेट एक्जामिनेसन"मा मातृभाषा विषयमा परिक्षा दिने बिद्यार्थीहरुको संख्या अत्याधिक घट्न गयो । यसको फलस्वरुप जातिय पहिचानको आन्दोलनको सुरुवात भयो ।**

१.३–**२०४६।४७** को जनअन्दोलन पछि मातृभाषालाई राष्ट्रियभाषाको मान्यता दिइएको भनिएतापनि मातृभाषाको शिक्षाको क्षेत्रमा कुनै ठोस सुधार गरिएन । बरु जातिय पहिचान र जनअन्दोलनको विपरित कार्य भयो ।

उदारहण:–

क) कक्षा १ देखि ५सम्म मातृभाषाअनिवार्य विषय हुने भनी पाठ्यक्रममा राखियो । तर त्यस भावनाको विपरित व्यवहारमा अहिलेसम्म पठन पाठन गराउने पहल् नगराई शिक्षामन्त्रालयले सरोकारवालाहरुलाई भ्रममा राखियो ।

ख) कक्षा ६,७र८मा मातृभाषा विषयको पढाई पंचायती व्यवस्थाकै निर्णय लागु गरी रोकिराख्यो।
ग) कक्षा ९ र १० मा मातृभाषालाइ ऐक्षिक गणित विषयसंग विकल्पमा राखिएको मातृभाषा दमन नीतिलाई कायम नै राखियो ।
घ) कक्षा ११ र १२ मा पंचायती शिक्षा नीति स्वीकार्दै मातृभाषा विषयको पढाइ रोकिराख्यो ।

**प्रतिफल :** जातिय पहिचानको भावनालाई शिक्षानीतिले समेट्न असफल भएकोले २०६२/०६३ को आन्दोलनको सुत्रपात भयो ।

**२–नेपाल सरकारले शिक्षामा लिइएको भाषानीतिको बारेमा : –**

२.१– २०४६।४७ को जनआन्दोलन देखि २०६२/०६३ को जनआन्दोलन सम्म पुग्दा मातृभाषाको शिक्षालाई सरकारी जिम्मेवारिबाट मुक्त गर्ने व्यवस्थाको सुरुवाट शिक्षा विभाग र पाठ्यक्रम विकास केन्द्रको सहकार्यमा शिक्षा मन्त्रालयबाट मातृभाषाको पठनपाठन गर्नलाई बजेट नदिने निर्णय गर्ने नीतिको चलन सुरु गरियो ।

**(क)–पाठ्यक्रम र पाठ्य सामग्रि निर्माण गर्ने नीति :–**
यस नीति अन्तर्गत मातृभाषा विषय पढाउन चाहने शिक्षक विद्यालय र सरोकारवालाहरु स्वयमले पाठ्यक्रम र पाठ्य सामग्रिहरु बनाउनुपर्ने नीति लिइयो ।

**(ख)–पाठ्य सामग्रिकोवितरण नीति–** यस नीति अनुसार १ देखि ३ कक्षा सम्म ६ वटा विषयहरुको पाठ्य सामग्रि किन्न ५ विषयको पाठ्य सामग्रिलाई मात्र बजेट निकासा गर्ने र ४ देखि ५ कक्षा सम्म ८ वटा विषयहरुको पाठ्य सामग्रि किन्न ७ विषयको पाठ्य सामग्रिलाई मात्र बजेट निकासा गर्ने चलन सुरु गरियो ।

**(ग)–शिक्षक व्यवस्थापन नीति –** मातृभाषा विषयको शिक्षा दिन शिक्षकको व्यवस्था नगर्ने नीतिलिइयो । यस अन्तरगत निम्न कामहरु भयो :

–शिक्षक दरबन्दि नदिने
–बजेत निकासा नगर्ने
–शिक्षक उत्पादन नगर्ने

**प्रतिफल : जातिय पहिचानको मुद्दा देसभरी तीब्र भयो र यो २०६२।६३ को जनआन्दोलनको मुख्य आधारशिला बन्यो ।**

२.२– **२०६२।६३** को जातिय पहिचानको जनआन्दोलनले दिएको अन्तरिम संविधानले भाषिक अधिकार उपयोग गर्नेबाटो खोलिदिए तर नेपाल सरकारले कुनै निश्चित पहल कदम चालिएन । बरु मातृभाषा विषयको शिक्षालाई पूर्णरुपमा विस्थापित गर्ने नीति लिखित रुपमा आयो ।

उदारहण :–

**(क)**–कक्षा १ देखि ५ सम्म निशुल्क शिक्षा दिनेनीति अन्तरगत मातृभाषा विषयको निमित्त लगानी रोक्का गर्ने, मातृभाषा विषयको शैक्षिक पाठ्यक्रम विकास लगायत सम्पूर्ण व्यवस्था सरोकारवालाहरु मार्फत गराउने भनि सरकारी शिक्षा निकाय आफ्नो जिम्मेवारी तथा दायित्वबाट पन्छिने लिखित निर्णय लियो ।

**(ख)**– कक्षा ६,७,र ८ मा मातृभाषा विषय राख्ने प्रयास गर्ने निहुमा पाठ्यक्रम बिकास गर्नको लागी ८ वर्षको लामो अवधि लियो । ८ वर्ष लगाएर पाठ्यक्रम मात्र तयार गरियो तर पाठ्य सामग्रि तयार गर्न कुनै चासो लिइएन । यस मातृभाषा विषयलाई कम्प्युटर शिक्षा संग विकल्पको विषय बनाई पठन पाठन गर्न नसकिने स्थिति सृजना गरियो ।

**(ग)**– कक्षा ९ र १० मा मातृभाषा विषयको शिक्षालाईऐच्छिक गणित विषयसित विकल्पको रुपमा राखिएकोमा जनबिरोध भएको कारण जनाई कम्प्युटर विषयको शिक्षा संग राख्ने प्रयास हाल भइरहेको छ । यसरी मातृभाषा शिक्षा निर्मूल पार्ने आधारशिलाको प्रतिस्थापन गर्ने प्रयत्न भएको छ ।

(घ)–मातृभाषा शिक्षालाई पूर्णरुपमा विस्थापित हुनेगरी अहिले कक्षा ४ देखि नै कम्प्युटर विषयसंग विकल्पको रुपमा राखीएको जानकारीमा आएको छ । यो २०६२।६३ को जातिय पहिचानको जनआन्दोलन विपरित हुनेछ ।

(ङ )–कक्षा ११ र १२ मा मातृभाषा विषयको पढाइ बन्द गरिएको हाल सम्म यथावत कायमै छ ।

**प्रतिफल :** संविधानमा उल्लेखित ***मातृभाषामा शिक्षा*** दिने कुरा ***मातृभाषा विषयको शिक्षा*** बिना दिइने कुराले अन्तरराष्ट्रिय जगतमा जगहँसाइको वातावरण सृजना हुनेछ ।

**३. नेपालको शिक्षामा मातृभाषा विषयको समस्या समाधान गर्ने बारे :–**

यस सन्दर्भमा नेपालको शिक्षामा देखापरिरहेका मातृभाषा विषयको ठोस समस्याहरु तथा समाधान गर्नुपर्ने विषय प्रस्तुत गर्न चाहन्छौं ।

**३.१ –प्राथमिक शिक्षा १ कक्षा देखि ५ कक्षा सम्मको पाठ्यक्रममा मातृभाषा विषयलाई अनिवार्य विषय भनी राखिय ता पनि नेपाल सरकारले हाल सम्म बिद्यार्थीहरुलाई व्यवहारमा मातृभाषा विषयलाई पढाउन दिइएको छैन ।** पाठ्यक्रममा समावेस भएका विषयहरुलाई बेवास्ता गरिकन विद्यालयहरुले आफुखुसि पाठ्यक्रम निर्धारण गरिकन शैक्षिक संस्था संचालन गर्दै आएकोमा शिक्षा मन्त्रालय सचिव अन्तरगतका **"अनुगमन, मुल्याङ्कन तथा निरीक्षण महाशाखा"**,**"अनुगमन तथा मुल्याङ्कन शाखा"**, **"निरक्षण शाखा"** र **"अनुसन्धान तथा शैक्षिक सूचना व्यवस्थापन शाखा"**, शिक्षा विभागको महानिर्देशक अन्तरगत **"अनुसन्धान तथा शैक्षिक सूचना व्यवस्थापन शाखा"**, **"अनुगमन तथा निरीक्षण शाखा"**, **"कार्यक्रम तथा बजेट शाखा"** यसैगरि पाठ्यक्रम विकास केन्द्रका कार्यकारि निर्देशक अन्तरगत **"भाषा शिक्षा शाखा"**, **"परिक्षण योजना मूल्याङ्कन तथा अनुसन्धान शाखा"** क्षेत्रीय शिक्षा निर्देशनालयहरुको निर्देशक अन्तरगत **"अनुगमन निरीक्षण तथा तथ्याङ्क शाखा"**हरु बाट विद्यालयहरुमा मातृभाषा विषयको शिक्षा नदिने कामको समर्थन जनाइ **"युनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोग"** र अन्य सरोकार वालाहरुलाई देखाउन मात्र मातृभाषा विषयको शिक्षा पाठ्यक्रममा समावेस भएको स्पष्ट हुन आउँछ ।

**सुझाव–** *अब नयाँ शैक्षिक सत्र देखि पूर्व प्राथमिक शिक्षा(शिशु कक्षा) देखि मातृभाषा विषय पढाउने र मातृभाषामा शिक्षा दिने ठोस नीतिकार्यन्वयन गर्नु पर्दछ ।*

- *सबै बिद्यालयहरुमा सरकारले बनाएको पाठ्यक्रमलाई प्रयोगमा ल्याउन दबाब दिनुपर्छ*
- *सरकारले बनाएको पाठ्यक्रमको असरदार कार्यान्वयन र अनुगमन हुनुपर्छ ।*
- *विद्यालयहरुमा मातृभाषा विषयको शिक्षकको व्यवस्था गर्ने र निशुल्क पाठ्य सामग्री वितरण गरिनु पर्छ ।*

**३.२– दोस्रो जनआन्दोलन पछि कक्षा ६ देखि ८सम्मको पाठ्यक्रममा मातृभाषा विषय समावेस गरेको भनिएतापनि यस विषयको पाठ्यपुस्तकहरुनै तर्जुमा गरिएको छैन । आजको कम्प्युटर तथा बिज्ञानप्रविधिको युगमा कम्प्युटर विषयलाई अनिवार्य गर्नु पर्नेमा मातृभाषा विषय शिक्षालाई बिकल्पको विषय बनाई मातृभाषांको शिक्षालाई शिक्षा क्षेत्रबाट बिस्थापित गर्ने नीति लिइएको छ ।**

**सुझाव–** *मातृभाषा विषयलाई छुट्टै पढ्नुपर्ने अनिवार्य विषयको रुपमा लिइनु पर्छ ।*
*–मातृभाषा विषयका पाठ्य सामग्रिहरु सवै विद्यालयहरुमा उपलब्ध गाराइनु पर्छ ।*

**३.३– विद्यालयशिक्षाको कक्षा ४ देखि १० सम्ममातृभाषा विषयलाई कम्प्युटर विषयको विकल्पमा राख्ने प्रावधान अघि सारिएको छ । यो पनि मातृभाषा विषयलाई शिक्षाबाट बिस्थापित गर्ने नीति भएको छ ।**

**सुझाव–** *मातृभाषा विषयलाई कम्प्युटर विषयको विकल्पमा राख्ने नीति खारेज गरी छुट्टै पढनुपर्ने अनिवार्य विषयको रुपमा लिइनु पर्छ ।*

**३.४– कक्षा ११ र १२ को पाठ्यक्रममा मातृभाषा विषयलाई पूर्णरुपमा हटाएर विद्यार्थीहरुको मातृभाषा पढ्न पाउने हक खोसिएको छ ।**

**विद्यालयमा शिक्षक बन्न शिक्षाशास्त्र संकायमा आफ्नो विषयमा न्यूनतम रुपमा १२कक्षाको शिक्षा हासिल गर्नुपर्ने प्रावधानले मातृभाषा बिषयको शिक्षक बिहीन बनाउने स्थिति सृजना गरिएको छ ।**

**सुझाव–** *कक्षा ११र १२को पाठ्यक्रममा मातृभाषा विषय पढ्नपाउने हक पुनर्स्थापना गरिनु पर्छ ।*

**४ नेपालमाभएको १२३ वटा मातृभाषाको शिक्षा बारे :–**

नेपालमा १२३ वटा मातृभाषाहरु बोलिन्छन् भन्ने कुरा तथ्याङ्क विभागले अघिसारेको छ । नेपाल जस्तो सानो देशले १२३ वटा मातृभाषाहरुको शिक्षा दिन सम्भव छैन भन्ने गलत धारणा जनतामा फैलाइएको छ ।

**तथ्य :**–धेरै जसो अल्पसंख्यक जातीहरु नेपालका निश्चित स्थान वा क्षेत्रहरुमा बसोबास गर्दछन् । नेपालका १२३ वटा मातृभाषाहरुमा लगभग १५ भाषाहरु मात्र १प्रतिसत भन्दा बढि जनसंख्याले बोल्छन् । अन्यभाषाहरु नेपालका निश्चित ठाउँहरुमा सानोसंख्याले मात्र बोलिन्छन् ।

**सुझाव :–** अब देस संघियतामा प्रवेश गरे पछि १ प्रतिसत भन्दा बढि जनसंख्याले बोलिने मातृभाषाहरुलाई संघिय बा केन्द्रिय सरकारले व्यवस्थापन गर्न आफ्नो दायित्वको रुपमा लिइनुपर्छ र अन्य अति अल्पसंख्यक मातृभाषाहरुलाई स्थानिय सरकारले ती मातृभाषा विषयलाई यसको उचित व्यवस्थापन गर्नु पर्दछ ।

मातृभाषा जनताको पहिलो पहिचान हो । सबै जनता भाषाको आधारमा समान हुने भन्ने संविधानको प्रावधानको विरुद्ध र जनताको पहिचानको मुद्दा विरुद्ध शिक्षा नीति तर्जुमा गर्नु जन भावना बिरुद्ध जाने हुने छ ।तसर्थ उपरोक्त समस्या शिक्षा क्षेत्रमा ब्याप्त भैरहेको र हामी सरोकारवालाहरु चारदसक भन्दा अघि देखि निरन्तररुपमा आफ्नो आवाज उठाउँदै आइरहेका छौं । जन आन्दोलन अघि र पछि पदभार ग्रहण गरेका सबै शिक्षा मन्त्रिहरुलाई यसको जानकारि गराउदै आएका छौं ।

**श्रीमानबाट शैक्षिक क्षेत्रमा सुधार गर्ने आफ्नो प्रतिवद्धता पत्रपत्रिका मार्फट जारी भएको छ । यसको हामी स्वागत गर्दछौं । मातृभाषाको शिक्षा बारे पनि यहाँबाट छुट्टै सम्बोधन हुने आशा लिएका छौं ।**

अहिले नेपालको संविधान जारी भइसकेको अवस्थामा नेपालको भाषिक शिक्षाको सम्पूर्ण दायित्व शिक्षा मन्त्रालयको काँधमा आइपुगेको छ । यस नयाँ राजनीतिक परिवेषमा नयाँ मन्त्रि परिषदले जनभावना अनुकूल शिक्षामा मातृभाषा विषयको संबोधन हुने आशा लिएकाछौं । धन्यवाद ।

**-ज्ञापन-**

**विद्यालयशिक्षामा शिशुकक्षा र १ देखि १२ कक्षा सम्म मातृभाषा विषय अनिवार्य विषयको रुपमा सबैले अध्यन गर्न पाउनु पर्छ र उच्च शिक्षामा आफ्नो इच्छा अनुसार पठनपाठन गर्न पाउनु पर्छ ।**

**भवदिय**

**देवदास मानन्धर, विष्णु चित्रकार, दिपक तुलाधर, सानु महर्जन, रमिता वज्राचार्य,**
**९७४१११६५६९, ९८४११६९१३०, ९८५१०७५९१५, ९८४३७०४५११,९८४१२२६८२४,**

**देवआनन्द महर्जन, अमृत स्यस्यः, नबिन थेच्वमि, राजेस शाक्य**
**९८४१८६३०९६,९८४३०६५१२५, ९८४१४५७४६३९८४१८७७७५३**

**नेपालभाषा शिक्षा अभियान**
**तथा**
**शिक्षामा मतृभाषाका सरोकार वालाहरु**